# इस्लामका पाँच आधार

लेखक

मौलना अब्दुर्रऊफ रहमानी

NEPALI - 266

प्रकाशक

आमन्त्रण तथा प्रदर्शन सहयोगी कार्यालय
सुल्ताना-रियाद



The Co-operative office for Call & foreigners Guidance at Sultanah
Under the supervision of Ministry of Islamic Affairs and
Endowment and Call and Guidance
Tel 4240077 Fax 4251005 P.O. Box 92675 Riyadh 11663 E-mail Sultanah22@hotmail.com



أركان الإسلام

# इस्लामका पाँच आधार

بااللغة النيبالية

लेखक

मौलना अब्दुर्रऊफ रहमानी

संशोधक

आफताब आलम मुहम्मद अनस
मुहम्मद सलीम साजिद अल-मदनी

प्रकाशक

आमन्त्रण तथा प्रदर्शन सहयोगी कार्यालय-सुल्ताना
पो॰ ब॰ : ९२६७५, रियाद : ११६६३
फोन : ४२४००७७, फ्याक्स : ४२५१००५
सउदी अरब

ⓗ المكتب التعاوني للدعوة والإرشاد بسلطانة ، ١٤١٩هـ

فهرسة مكتبة الملك فهد الوطنية أثناء النشر

الرحماني ، عبد الرؤوف

أركان الإسلام – ط٢– الرياض.

٦٤ ص ؛ ١٢ X ١٧ سم

ردمك : X – ٥٩ – ٨٢٨ – ٩٩٦٠

( النص باللغة النيبالية )

١– العبادات ( فقه إسلامي ) ٢– الإسلام – مبادئ عامة

أ– العنوان

ديوي ٢٥٢ ١٩/١٨٩٦

رقم الايـداع: ١٩/١٨٩٦

ردمك: X–٥٩–٨٢٨–٩٩٦٠

# इस्लामका पाँच आधार



## विषय सूची


| क्र॰सं॰ | शीर्षक | पृ॰सं॰ |
| --- | --- | --- |
| १. | कलमा | ४ |
| २. | नमाज | १३ |
| ३. | जकात | ४३ |
| ४. | रोजा | ४७ |
| ५. | हज | ५२ |

## बिस्मिल्लाहिर्रहमानिर्रहीम

(शुरू गर्दछु अल्लाहको नामबाट जुन क्षमा गर्न सक्ने कृपालु र दयालु हो)

## प्रथम आधार–पवित्र कलमा

**लाइलाहाइल्लल्लाह** (لَا إِلٰهَ إِلَّا اللّٰهُ)

(अल्लाह बाहेक कोही सत्य पूजनीय छैन्)

मुसलमान उही व्यक्ति हुन्छ जसले आत्माले अल्लाहलाई मात्र पुज्यनीय सम्झन्छ र बचनले पनि स्वीकारोक्ति दिदा छ र अल्लाह बाहेक फरिश्ता, वली वा अरूलाई पुज्यनीय मान्दैन किन भने तिनीहरू पनि हामी जस्तै अल्लाहका सेवक हुन् । तिनीहरूले कसैलाई जन्म दिने, रोजि दिने अथवा लाभ हानि पुन्याउने क्षमता राख्दैनन् । यी सबै कुराहरू अल्लाहको अधिकारमा छन्, उसैले सबैलाई जन्म दिएको छ, सबैलाई रोजी दिन्छ, त्यसैको हातमा सबैको ज्यान छ मानिसलाई जीवित राख्ने, मार्ने, बिरामी पार्ने, निको पार्ने उसैको अधिकारमा छ । पृथ्वी र आकाशलाई उसैले सँभाली राखेको छ सम्पूर्ण विश्वको पालनकर्त्ता उही हो । उसको अन्य कोही साझी वा

सहायक छैन। उसका कोही पिता वा पुत्र वा भाई छैन। सबै उनका सेवक र याचक हुन, उ कसैको याचक होइन। उसैले सबैलाई मदत गर्दछ, सबैको साथ छ र सबैको वास्ता राख्दछ। उ एक्लै पूजनीय छ, उस बाहेक कोही पूजनीय छैन।

अल्लाहलाई नमान्ने व्यक्ति काफिर हुन्छ, मरणोपरान्त उ नर्कमा जानेछ। अल्लाहका साथ अरूलाई साझेदार मान्ने व्यक्ति **'मुशरिक'** हुन्छ, उसले मुक्ति पाउने छैन। मुक्ति उसले पाउनेछ, जसले अरूलाई पुज्यनीय मान्दैन र अल्लाहको मात्र सेवक हुन्छ, उसैको आदेशमा हिड्दछ, उसैसित डराउँछ उसैमाथि भरोसा राख्दछ। यसैलाई **'तौहीद'** भनिन्छ। यही तौहीद इस्लाम धर्मको वास्तविक आधार हो र यसको अभावमा अन्य कुनै व्यवहार स्वीकार्य हुँदैन, न नमाज, न रोजा, न हज न जकात र न त दान वा बकस।

याद राख्नुहोस **'शिर्क'**[1] सबभन्दा ठूलो अपराध हो जो कदापि क्षम्य हुनेछैन। सर्वप्रथम यो स्वीकार गर्नु होस् कि

---

[1] अल्लाहको काममा अरूलाई शरीक भएको मान्ने धारणालाई 'शिर्क' भनिन्छ।

अल्लाह बाहेक कोही पुज्यनीय छैन र 'कुफ्र'[1] ठूलो पाप हो जुन कहिले पनि क्षम्य हुनेछैन । यसर्थ स्वीकार गर्नुहोस् अल्लाह नै सत्य पुज्यनीय हो । **'लाइलाह इल्लल्लाह'** को अर्थ यही हो कि अल्लाह बाहेक कोही सत्य पुज्यनीय छैन । यस सानो स्वीकारोक्तिबाट मानिस शिर्क र कुफ्रबाट पवित्र भएर तौहीदमा प्रवेश गर्दछ । यही कलमा धर्मको मूल ढोका हो र यही कलमा स्वर्गको सांचो हो ।

## मोहम्मदुर्रसूलुल्लाह

(मोहम्मद अल्लाहका रसूल हुन्)

अल्लाह आफनो ज्ञान र शक्ति द्वारा सबैको साथ छ तर सबैसित कुरा गर्नु उसको नियम होइन, अपितु मानिसहरू मध्ये कसै कसैलाई छानेर उसले आफनो 'रसूल' बनाउँछ र उसलाई फरिश्ता (Angle) हरूको माध्यमबाट आफना कुराहरू भन्न लगाउँछ । रसूलले कुनै काममा अल्लाहको खुशी र कुनैकाममा क्रोध हुन्छ, अल्लाहद्वारा निर्देशित कुराहरू अरू मानिसलाई बताउँछन्, यसैको नाम धर्म हो ।

---

[1] अल्लाहलाई नमान्ने कृयालाई 'कुफ्र' भनिन्छ ।

विश्वमा मानिसको सृष्टि भए देखिन् तिनलाई सोझो बाटो देखाउन र सचेत गर्न प्रत्येक देश र समुदायबाट अल्लाहले रसूलहरू बनाउन थालेको हो। तर रसूलहरू-को देहावसान पछि मानिसले रसूलका कुराहरू बिर्सने र बदल्ने गर्दथे। त्यसकारण अन्तमा अल्लाहले आफ्ना सबभन्दा ठूलो रसूल मोहम्मद (वहाँमाथि शान्ति होस्) लाई सम्पूर्ण विश्वका लागि पैगम्बर[1] बनाएर पठायो र वहाँमाथि कुरआन अवतरण गराई त्यस धर्मलाई जसको प्रचार प्रारम्भदेखि रसूलहरूले गर्दै आएका थिए, परिपूर्ण गर्यो। अनि अल्लाह तआलाले बतायो कि त्यस किताबको संरक्षक उ स्वयम् छ, यसका कुराहरूलाई कसैले बदल्न सक्दैन त्यसकारण मोहम्मद (वहाँमाथि शान्ति होस्) पछि कुनै रसूलको आवश्यकता रहेन र कयामत (प्रलय) सम्म अन्य कुनै रसूल आउने छैन।

यसर्थ जो सुकैले आत्मा र वचनले वहाँलाई रसूल स्वीकार गर्दछ, उ मुसलमान हो र अस्वीकार गर्ने व्यक्ति काफिर हो। पवित्र कलमा 'ला इलाहाइल्लल्लाहो मोहम्मदुर्रसूलुल्लाहो' लाई मानेर स्वीकार नगरेसम्म कोही मुसलमान हुन सक्दैन्।

[1] पैगम्बरको अर्थ संदेशवाहक हो।

# मोहम्मदुर्रसूलुल्लाहो ﷺ[1]

हजरत मोहम्मद (वहाँमाथि शान्ति होस्) को जन्म २० अप्रैल सन् ५७१ ई॰ तदानुसार, सम्बत ६२० सालको बैशाख महीनामा सऊदी अरबको प्रसिद्ध **'मक्का'** नगरमा भएको थियो । वहाँको बुवा अब्दुल्लाह वहाँ जन्मिनु भन्दा केही अगाडि मात्र बिती सक्नु भएको थियो । वहाँको बाजे अब्दुलमुत्तलिबले वहाँको पालन पोषण गर्नु भयो । वहाँ ६ (छ) वर्षको उमेर पुग्नासाथ वहाँकी आमा पनि बित्नु भयो र त्यसको दुई वर्ष पश्चात अब्दुलमुत्तलिबको पनि देहावसान भयो तद्पश्चात वहाँ आफ्ना काका अबू तालिबको घरमा बस्नु थाल्नु भयो, अबू तालिब प्यार र स्नेहका साथ वहाँको पालन पोषण गर्न थाल्नु भयो ।

त्यस बेला मक्कामा कुनै विद्यालय वा पाठशाला थिएन ।

पढ्ने लेख्ने प्रथा पनि नभएकोले अरू मानिस सरह रसूल मोहम्मद (वहाँमाथि शान्ति होस्) पनि अशिक्षित नै हुनु हुन्थ्यो । मक्काका मानिस शिर्क गर्दथे, मूर्तिपूजा गर्दथे,

[1] अन्तिम रसूल मोहम्मदको नाम पुकार्दा वा सम्बोधन गर्दा त्यस्तो गर्ने र सुन्नेले पनि 'सल्लल्लाहो अलैहे वसल्लम' भन्नु पर्दछ, यसको अर्थ हो 'वहाँमाथि शान्ति होस्'

कोही जुवा खेल्ने र मदिरा पान पनि गर्दथे, तर मोहम्मद (वहाँमाथि शान्ति होस्) लाई अल्लाहले सम्पूर्ण खराबीहरूबाट बचाएको थियो । वहाँ अतिनै स्वच्छ सच्चा र कृपालु हुनुहुन्थ्यो । सबैमाथि दया गर्नु हुन्थ्यो, अरूलाई वहाँको इमान्दारीमाथि विश्वास थियो र आफ्ना-आफ्ना नासो वहाँसित राख्ने गर्दथे, यसैकारण वहाँ 'अमीन'[1] को नामले प्रसिद्ध हुनुहुन्थ्यो ।

वहाँको उमेर पचीस वर्ष पुगेपछि मक्काकी एउटी सम्पन्न र बुद्धिमती ४० वर्षीया विधवा महिला हजरत खदीजा (रजि०) सग वहाँको विवाह सम्पन्न भयो । हजरत[2] खदीजा (रजि०) बाट कासिम र अब्दुल्लाह नाम गरेका दुईजना छोरा जन्मेका थिए तर तिनीहरूको वाल्यकालमा नै देहावसान भयो । साथै चार छोरीहरू जन्मिन्, तिनीहरूमा कान्छी छोरी हजरत फातिमा हुनुहुन्थ्यो ।

मक्काबाट केही टाढा **'हेरा'** नाम गरेको एउटा पहाडी गुफा छ । सोही हेरा भन्ने गुफाभित्र गएर एकान्तमा

---

[1] कसैको नासो राख्ने व्यक्तिले त्यसतो माल वस्तुलाई नमासी इमान्दारी साथ फिर्ता गर्नेलाई 'अमीन' भनिन्छ ।

[2] यो एउटा आदर सूचक शब्द हो ।

कय्यो दिनसम्म पूजा गरीराख्ने वहाँको बानी थियो। चालीस वर्षको उमेर पुगेपछि अल्लाहले त्यहाँ 'जिब्राईल' भन्ने फरिश्ता पठायो जसले वहाँलाई सूरः 'इकरा' का केही पंक्तिहरू पढाउनु भयो। यसपछि अलि-अलि गरी कुरआन वहाँमाथि अवतरण हुन थाल्यो। वहाँले मक्कावासीहरूलाई त्यसका पंक्तिहरू सुनाउन थाल्नु भयो। तिनीहरूले तिनको ठट्टा गरेर वहाँको शत्रु बने। तर हाम्रो रसूलले तिनीहरूको शत्रुताको परवाह नगरी अल्लाहको सन्देश बराबर पुर्याउँदै गर्नु भयो। यसै बीचमा केही व्यक्ति मुसलमान बने। काफिरहरूले तिनीहरूलाई पनि सताउन थाले,पवित्र रसूलले तिनीहरू मध्ये केहीहरूलाई नजाशी राजा भएको देश हब्शामा (हालको ईथोयोपिया) शान्तिपूर्वक बस्न पठाउनु भयो।

नबी (रसूल)[1] भएको दशौं वर्ष मेराज भयो। अर्थात् एक राती अल्लाहले वहाँलाई 'मस्जिदे हराम' बाट 'मस्जिदे अक्सा'[2] लगेर सबै आकाशहरूको भ्रमण गरायो र आफ्ना चिन्हहरू देखायो। उसै वर्ष वहाँकी धर्मपत्नी हजरत

---

[1] दुवै शब्द पर्यायवाची हुन्।

[2] यो मस्जिद युरोशलममा छ जुन क्षेत्र हाल इज्राइलको कब्जामा छ।

खदीजा (रजि०) र शत्रुहरूबाट सुरक्षित राख्ने वहाँको काका अबू तालिब पनि परलोक हुनु भयो। त्यसकारण काफिरहरूले धेरै दु:ख दिन थाले पछि तिनको प्रतिकार शुरू भयो। अल्लाहका रसूल र इस्लाम स्वीकार गर्नेहरू-लाई साह्नै दु:ख र उत्पीडन दिन थालियो। अल्लाहको कृपा थियो कि सोही समयमा मदीना[1] आएर केही व्यक्तिहरू मुसलमान बने र रसूलले (वहाँमाथि शान्ति होस्) मुसलमानहरूलाई त्यहीं पठाउन थाल्नु भयो।

अन्तमा काफिरहरूले राय सल्लाह गरी अल्लाहको रसूललाई नै रातीमा हत्या गर्ने निधो गरे। तिनीहरूको योजनासित अल्लाहले वहाँलाई सावधान गराएर प्रवास गर्ने अर्थात् मक्का छोड्ने स्वीकृति प्रदान गर्यो। रातीमा वहाँले सबभन्दा पहिले इस्लाम स्वीकार गर्ने हजरत अबू बक्र (रजिअल्लाहोअन्हो)[2] सित एउटा खड्डमा लुकी राख्नु भयो। काफिरहरूले कैयन् दिन सम्म हेरे तर पाएनन्। तिनीहरू थाकेर बसी सकेपछि वहाँले हजरत

---

[1] मदीना साउदी अरबको एउटा प्रसिद्ध शहर हो।

[2] रसूलका साथी 'सहाबा' हरूको नाम पछाडी 'रजिअल्लाहोअन्हो' भन्ने र लेखने गर्नु पर्दछ। जसको अर्थ हो अल्लाह उनीसित प्रसन्न भयो।

अबू बक्र सित खड्डबाट निस्केर मदीना जानु भयो। त्यहाँका धेरै मानिस मुसलमान भए अनि हब्शामा गएका मुसलमानहरू पनि मदीना आए र मक्कामा रहेका मुसलमानहरू पनि त्यहीं आइन थाले। त्यसकारण काफिहरूले मदीना माथि आक्रमण गर्न थाले र पटक-पटक युद्ध गरे। तिनीहरूले मुसलमानहरूलाई समाप्त गर्न चाहन्थे तर अल्लाहले आफ्ना रसूललाई विजयी गराउँदै गयो र प्रवासको आठौं वर्ष मक्का माथि पनि विजय प्राप्त भयो। त्यहाँका मानिस पनि मुसलमान भए। यस पछि सम्पूर्ण अरब भरीमा मुसलमानहरू फैलिन पुगे।

मोहम्मद (वहाँमाथि शान्ति होस्) टुहुरो भएर जन्मनु भएको थियो। चालिस वर्षको उमेरमा अल्लाहले वहाँलाई आफ्नो रसूल बनायो। तेइस वर्षसम्म रसूल रहनु भयो। यिनै तेइस वर्षमा आवश्यकतानुसार अलि-अलि अवतरित हुँदै कुरआन पूर्ण रूपले अवतरित भयो।

त्रिसट्ठी वर्षको उमेरमा पवित्र रसूल (वहाँमाथि शान्ति होस्) १२ रबीउल अव्वल, अर्थात ८ जून ६३२ ई॰ तदानुसार जेष्ठ ६८५ बि॰ सं॰ मदीनामा वहाँको देहावसान भयो, र त्यहीं वहाँलाई दफनाइयो। वहाँ माथि शान्ति होस्।

# दोश्रो आधार- नमाज

मक्कामा मेराजको राती मुसलमानहरूका लागि प्रत्येक दिन पाँच चोटि - फज्र, जोहर, अस्र, मगरिब र एशाको नमाज पढ्नु अनिवार्य भयो ।

नमाजमा अल्लाहले ठूल-ठूला फाइदाहरू निहीत गरेको छ ।

१. नमाजले मानिसलाई लज्जाहीनता र दुष्कर्मबाट अलग राख्दछ ।

२. नमाज पढेबाट मानिसको आत्मा प्रज्जवलित हुन्छ । उसको काममा फाइदा र उसको दु:ख निवारण हुन्छ ।

३. नमाजबाट अल्लाह खुशी हुन्छ । यसले मानिसका पापहरूलाई समाप्त गर्दछ र मरणोपरान्त स्वर्ग प्रदान गर्दछ ।

४. नमाज पढ्नेहरू समयका पाबन्द हुन्छन् ।

५. ठीक समयमा पढिने नमाज अन्य सबै पूजाहरू भन्दा अल्लाहलाई बढी मनपराउने हुन्छ ।

६. नमाज इस्लामको एउटा ठूलो परिचायक चिन्ह हो, जसले यसलाई कायम राख्यो, उ सच्चा मुसलमान हुन्छ र जसले छाड्यो उ **'फासिक'** अथवा अनाज्ञाकारी हुन्छ ।

## नमाजका शर्तहरू

सर्वप्रथम नमाजमा सात कुराहरू अनिवार्य छन्, तिनीहरू बिना नमाज हुँदैन ।

### १. शरीरको पवित्रता :

शरीरको कुनै अंङ्गमा कुनै प्रत्यक्ष अपवित्रता जस्तै मल, मुत्र इत्यादि नलागेको होस् र अप्रत्यक्ष अपवित्रता जस्तै स्नान वा वोजू गर्नु पर्ने कारण नभएको हुनु पर्दछ ।

### २. वस्त्रको पवित्रता :

नमाज पढ़दा लगाइने कपड़ा पवित्र हुनु पर्दछ ।

### ३. स्थानको पवित्रता :

नमाज पढिने स्थान पवित्र हुनु पर्दछ ।

### ४. आवरण :

लोग्ने मानिसले नाभीदेखि घुँडासम्मको अङ्ग अनिवार्य

रूपले ढाक्नु पर्दछ नमाजमा र अघि पछि पनि। स्वास्नी मानिसले दुबै हात, र अनुहार बाहेक कपाल समेत शरीरको प्रत्येक अङ्गलाई ढाक्नु अनिवार्य छ।

**५. उपयुक्त समय हुनु :**

कुनै पनि नमाज निश्चित समयमा पढिनु पर्दछ। निश्चित समयमा भन्दा अगावै पढिएको नमाज स्वीकार्य हुँदैन र पछि पढिने नमाज 'कजा' हुनेछ।

**६. किब्लातिर मुख गर्नु :**

मुसलमानको किब्ला पवित्र बैतुल्लाह अर्थात काबा हो, जुन मक्का नगरमा छ। यहाँबाट पश्चिम दिशामा पर्दछ। त्यसै तिर मुख गरी नमाज पढिनु पर्दछ।

**७. नीयत गर्नु :**

जुन नमाज पढिने हो, हृदयमा उसको नीयत गर्नु पर्दछ। त्यसरी नीयत गर्दा मुखले नै भन्नु पर्ने कुरा प्रमाणित छैन।

## पानी

वोजू वा स्नान पानीले हुन्छ। समुद्र, नदी, तलाउ वा इनार वा यी सबैमा पाइने पानी पवित्र र पवित्र गर्ने हुन्छ।

तर त्यसमा अन्य कुनै पवित्र वस्तु मिसिएर शर्बत वा गुलाफ जल हुन गएमा त्यो पवित्र त हुन्छ तर पवित्र गर्न सक्दैन । त्यसबाट वोजू वा स्नान गर्नु हुँदैन । यदि पानी पाँच बाल्टी वा सो भन्दा बढी छ र त्यसमा कुनै अपवित्र चीज मिसिई त्यसको (मज़ा) रंग वा गंधमा अलिकति पनि परिवर्तन हुन गएको छ भने, त्यस्तो पानी पवित्र रहँदैन । उक्त परिमाण भन्दा थोरै पानीको (मज़ा) रंग वा गंधमा परिवर्तन नभए पनि त्यो पवित्र रहँदैन । तर नदीमा बग्ने पानी, ठूलो कुण्ड वा तलाउको पानी पवित्र हुन्छ ।

## स्नान

मानिसको कुरा शरीरबाट पसिनाका साथै एउटा अन्य अपवित्रता निस्कन्छ । बाहिरबाट धुलोहरू पनि पर्ने गर्दछन, जसले गर्दा मैल जम्मा हुन जान्छ, त्यसकारण स्नान गर्ने आदेश दिइएको छ। जुमाको दिन अवश्य नै नुहाउनु पर्दछ । यसकारण कि त्यो सुन्नत हो । ईद र बकरईदहरूमा पनि नुहाउनु सुन्नत हो ।

अपवित्र मानिसले स्नान गर्नु अनिवार्य हुन्छ । तिनले न नुहाएसम्म कुरआनको पाठ गर्नु वा नमाज पढ्नु हुँदैन ।

स्नान गर्ने विधि यो हो कि सर्वप्रथम दुबै हात नारी सम्म धोएर अपवित्रता लागेको ठाऊँलाई धुनु पर्दछ । यस पछि बिस्मिल्लाह पढेर दुबै हाथ नारी सम्म धुनु पर्दछ । फेरि कुल्ला गर्नु, नाकमा पानी हालेर सफा गर्नु, यसपछि निधारमा कपाल देखि मुनि अनुहारमा एक कान बाट अर्को कानको लोती सम्म तीन तीन चोटि धुनु पर्छ । फेरि दुबै हात कुहिना सम्म धुनु पर्दछ । यसपछि सम्पूर्ण शरीरमा पानी हालेर मल्नु पर्दछ र दाह्रीका रौंहरूमा औंला हालेर कुनै पनि रौंका जरा सुख्खा नरहने गरी धुनु पर्दछ । फेरि शरीरमा पानी हालेर दुबै खुट्टा धुनु पर्दछ ।

यदि नदी वा तलाउमा नुहाउने हो भने डुबुल्की लगाएर राम्रोसंग शरीर सफा गर्नु पर्छ । जिउको अन्य अङ्ग, मुख र नाकमा पनि पानी पुर्याउनु आवश्यक छ ।

## वोजू

नमाजको लागि वोजू गर्नु अनिवार्य हो । वोजू गर्नेहरू-लाई धेरै फाइदा हुन्छ । वोजू गर्दा अंग, प्रत्यंगबाट चुहिने पानीको प्रत्येक थोपाबाट पाप घुल्दै जान्छ । प्रलयको दिन वोजू गर्नेहरूको शरीरका अंगहरू चम्कन्छन्, जसबाट तिनीहरू मेरो उम्मतका मानिस हुन भनी रसूल (वहाँमाथि शान्ति होस्) ले चिन्नु हुनेछ ।

वोजू गर्ने विधि यो हो कि पवित्र पानी सफा भांडोमा लिएर कुनै अग्लो ठाउँमा छिटा नपर्ने गरी बस्नु पर्दछ। **'बिस्मिल्लाह'** (بِسْمِ الله) पढेर पहिले दुबै हात नारीसम्म धुनु अनि तीन चोटि कुल्ला गर्नु, दतिवन भए दाँत राम्रोसंग माझनु अनि नाकमा दुबैप्वालमा तीन तीन चोटी पानी हाली सफा गरेर निधारमा कपाल देखि मुनि अनुहारमा एक कानबाट अर्को कानको लोती सम्म तीन–तीन चोटी धुनु पर्छ। यसपछि दुबै हात कुहिना समेत पहिले दायाँ अनि देब्रे गरी तीन–तीन चोटी धुनु पर्दछ। औंलामा औंठी वा अरू केही भए हल्लाएर त्यस मुनीको छाला भिज्ने गरी दुबै हातका पन्जा निधार देखि पछाडि सम्पूर्ण टाउको घसी, कानका चारै तिर औंला घुमाउनु पर्ने र अन्तमा दायाँ र देब्रे दुबै खुट्टा धुनु पर्छ।

वोजूमा चार कुराहरू अनिवार्य छन्। सम्पूर्ण मुख धुनु, दुबै हात कुहिनासम्म धुनु, टाउको घस्नु र दुबै गोडा धुनु। एउटै वोजूबाट त्यो कायम रहेसम्म धेरै चोटी नमाज पढ्नु सकिन्छ।

**घस्ने काम**[1] :

वोजू गर्दा यदि टाउको माथि पगरी छ भने त्यसको

[1] अरबीमा 'मसह' गर्ने क्रियालाई यहाँ घस्ने काम भनिएको छ।

माथिबाट घसे पनि हुन्छ तर टोपी भने उतार्नु पर्दछ। यदि वोजू गर्दा कुनै अङ्गमा घाउले गर्दा पट्टी बाँधिएको रहेछ र सो खोल्दा झिक्दा कष्ट हुने वा रोग बढ्ने संभावना छ भने त्यसको माथिबाट मात्र हात फेरेर पनि पुग्दछ।

यदि पाउमा सुत, उनी, नाइलन वा अन्य कुनै चीजको मोजा[1] लगाई राखेको छ भने वोजू गर्दा त्यस माथि हात फेर्नु मात्र पनि पर्याप्त हुन्छ। घरैमा बस्ने व्यक्ति एक दिन एक रातसम्म र वाहिर गएका यात्रीले ३ दिन ३ रातसम्म त्यसरी हात फेर्न वा घस्न सक्दछ, त्यसपछि मोजा फुकाली[2] गोडा धोएर पुनः लगाउन हुन्छ र उल्लेखित अवधिसम्म फेरि घसेर हुन्छ।

## तयम्मुम

पानी उपलब्ध नभएको अवस्थामा, पानी प्रयोग गर्दा विरामी हुने वा रोग बढ्न सक्ने सम्भावना हुँदा तयम्मुम गर्नु पर्दछ। तयम्मुम पवित्र माटोले गर्नु पर्दछ। यसो सर्वप्रथम **'बिस्मिल्लाह'** (بِسْمِ اللهِ) पढेर दुबै हात पवित्र

---

[1] वोजू गरे पछी पवित्रता को अवस्थामा

[2] वोजू गर्ने बेला

माटो माथि राखेर हत्केला र नारीसम्म र फेरि अनुहारमा फेर्नु पर्दछ। यही नै तयम्मुमको वोजू र स्नान हो।

## वोजू कुन-कुन क्रियाले समाप्त हुन्छ :

निम्नलिखित पाँच कुराहरूले वोजू समाप्त हुन्छ।

१. दिशा गरेबाट।

२. पिसाब गरेबाट।

३. उक्त दुबै निस्कने बाटोबाट अन्य कुनै चीज निस्केमा।

४. पल्टेर वा अडेस लगाएर निदआएमा र

५. बेहोश भएबाट।

जुन-जुन कुराहरूले वोजू समाप्त हुन्छ, तिनै कुराहरूले तयम्मुम पनि समाप्त हुन्छ र पानी उपलब्ध नभएर गरिएको तयम्मुम पानी उपलब्ध हुना साथ समाप्त हुन्छ।

## नमाजको समय

१. **फजर** : - बिहान भएपछि फजरको समय प्रारम्भ हुन्छ र सूर्योदय नहुन्जेल सम्म रहन्छ।

२. **जोहर** : - सूर्य ढली अपरान्ह भए देखि प्रारम्भ हुन्छ

र कुनै वस्तुको छाया वास्तविक आकार भन्दाबढी भए पछि समाप्त हुन्छ ।

३. **अस्र** : - जोहरको समय समाप्त भएपछि अस्रको समय प्रारम्भ हुन्छ र सूर्यास्त नभएसम्म रहीरहन्छ, तर घाम पहेंलो भएपछि नमाज पढ्नु प्रभावहीन (मकरूह) हुन्छ ।

४. **मगरिब** :- सूर्यास्त पछि प्रारम्भ भएर साँझको लालिमा रहेसम्म रहन्छ ।

५. **एशा** :- आकाशमा साँझको लाली समाप्त भएपछि आधि रात सम्म रहन्छ । नमाज प्रारम्भिक समय-मा नै पढ्नु श्रेयस्कर हो, तर एशाको नमाजमा अलि अबेर गर्नु नै श्रेयस्कर हुन्छ ।

## जुमा

जुमाको समय त्यही हो जुन जोहरको समय हो ।

ईदहरूको नमाज सूर्य एक प्रहर उठी सकेपछि मध्यान्ह भन्दा अगाडि सम्म रहन्छ । ईदुलफित्रमा मानिसहरू केही खना पीन गर्न भ्याउने गरी अलि अबेर गर्नु पर्दछ र बकरईदमा कुरबानी सबेरै गर्न भ्याउने गरी अलि चांडै गर्नु पर्दछ ।

जुन बेला सूर्य ठीक टाउको माथि हुन्छ। (मध्यांन्हमा) वा अस्त हुन लागेको बेला वा उदय हुन लागेको बेला नमाज पढ्नु मनाही छ किनभने मुशरिकहरू उपरोक्त समयमा सूर्यको पूजा गर्दछन्।

## अजान र इकामत

मस्जिदमा पाँच फर्ज नमाजहरू र जुमाको लागि अजान दिइन्छ। अजान यो हो।

अल्लाहो अकबर (الله أكبر) (चार चोटि) अल्लाह सबै भन्दा महान छ।

अश्हदो अल्लाइलाहा इल्लल्लाह (أَشْهَدُ أَنْ لَا إِلَهَ إِلَّا الله) (दुई चोटी) म साक्षी बस्दा छु कि अल्लाह बाहेक कोही पूजनीय छैन।

अश्हदोअन्नमोहम्मदर्रसूलुल्लाह (أَشْهَدُ أَنَّ مُحَمَّداً رَسُولُ الله) (दुई चोटी) म साक्षी बस्छु कि मोहम्मद (वहाँ माथि शान्ति होस्) अल्लाहका रसूल हुन्।

हय्यअलस्सलाह (حَيَّ عَلَى الصَّلاة) (दुई चोटी) आउनुहोस् नमाजको लागि।

हय्यअलल्फलाह (حَيَّ عَلَى الْفَلاَح) (दुई चोटी) आउनुहोस् मुक्तिको लागि ।

अल्लाहो अकबर, अल्लाहो अकबर (الله أكبرُ, الله أكبر)

लाइलाह इल्लल्लाह (لاَ إِلَه إلاَّ اللهُ)

फजरको नमाजका लागि दिइने अजानमा 'हय्यअ-लल्फलाह' पछि दुई चोटी 'अस्सलातो खैरूम्मिनन्नौम' (الصَّلاَةُ خَيْرٌ مِّنَ النَّوْم) (नमाज निद्रा भन्दा बेश हो) भन्नु वा पुकार्नु पर्दछ ।

नमाजको लागि जमाअत खडा हुने बेला इकामत भनिन्छ। यसमा पनि अजानमा पुकारिने शब्दहरू नै पुकारिन्छ । दुबैमा केही अन्तर छन् जुन यस प्रकार छन् :

## इकामत

'अल्लाहोअकबर' (الله أكبرُ) दुई चोटि मात्र पुकारिन्छ

'अश्हदोअल्लाइलाह इल्लल्लाह' (أَشْـهَدُ أَن لاَ إِلَـهَ إلاَّ اللهُ) (एक चोटी)

'अश्हदो अन्नमोहम्मदर्रसूलुल्लाह' (أَشْهَدُ أَن مُحَمَّدًا رَسُولُ الله) (एक चोटी)

हय्यअलस्सलाह' (حَيَّ عَلَى الصَّلَاة) र 'हय्यअलल्लफलाह' (حَيَّ عَلَى الْفَلَاح) एक-एक चोटि मात्र पुकारिनु पर्दछ। फेरि 'कदकामतिस्सलाह' (قَدْ قَامَتِ الصَّلَاةُ) र 'अल्लाहो अकबर' (الله أكبر) (दुई चोटी) पुकारिनु पर्दछ। यसपछि एक चोटि 'लाइलाह इल्लल्लाह' (لا إله إلا الله) भन्नु पर्दछ।

अजान ठूलो आवाजले रूकी रूकीकन पुकार्नु पर्दछ भने इकामत सो भन्दा आधी आवाजले अलि छिटो-छिटो पुकार्नु पर्दछ। जुनसुकै मुसलमानको कानमा अजानको आवाज पुग्दछ, कुनै बिरामी वा अन्य कारण छैन भने उसले मस्जिदमा आई फर्ज नमाज पढ्नु पर्दछ। अजान सुन्नेले जवाफमा अजानमा पुकारिने वाक्यांशहरू दोहर्याउने गर्नु पर्दछ। तर 'हय्यअलस्सलाह' र 'हय्यअलल्फलाह' सुनेर 'लाहौलावला कुव्वता इल्ला बिल्लाह' भन्नु पर्दछ। मस्जिद बाहिर अन्य कुनै ठाउँमा सामूहिक तौरले नमाज पढिने हो भने त्यहाँ पनि अजान र इकामतका साथ पढ्नु पर्दछ। मोअज्जिन अर्थात् अजान पुकार्ने मानिसलाई धेरै पुण्य (सवाब) प्राप्त हुन्छ। उसले पुकारेको अजान सुन्ने सम्पूर्ण प्राणी र वस्तु प्रलयको दिन उसले अजान दिएको गवाही दिनेछन् र निर्णयको मैदानमा उसको मस्तक अरू भन्दा उच्च रहनेछ।

## नमाज पढ्ने प्रकृया

नीयत गरेर किब्ला तर्फ मुख गरेर दुबै हात कानसम्म उठाई 'अल्लाहो अकबर' (الله أكبرُ) भनेर देब्रे हात माथि दायाँ हात पर्ने गरी दुबै हात छातीमा बाँध्नु पर्दछ। फेरि सना पढ्नु पर्दछ जुन यसरी छ :

«اللَّهُمَّ بَاعِدْ بَيْنِي وَبَيْنَ خَطَايَايَ كَمَا بَاعَدتَّ بَيْنَ المَشْرِقِ وَالْمَغْرِبِ ، اللَّهُمَّ نَقِّنِي مِنْ خَطَايَايَ كَمَا يُنَقَّى الثَّوْبُ الأَبْيَضُ مِنَ الدَّنَسِ ، اللَّهُمَّ اغْسِلْنِي مِن خَطَايَايَ بِالْمَاءِ وَالثَّلْجِ وَالْبَرَدِ»

"अल्लाहुम्मबाइद बैनी व बैन खातायाया कमा बाअत्त बैनलमशरेके वल्मगरेबे, अल्लाहुम्म नक्केनी मिनखताया कमा योनक्कस्सौवुल अबयजो मिनद्दनसे, अल्लाहुम्मग्सिल खतायाया बिल्माए वस्सलजे वल्बरद।"

अर्थ :- हे अल्लाह तपाईंले पूर्व र पश्चिम बीच जत्तिकै मेरो र मेरा पापहरू बीच दूरी पार्नुहोस्, हे अल्लाह मलाई तपाईंले सेतो लुगा फोहोरबाट सफा भए जस्तै मेरा पापहरूबाट पवित्र पार्नु होस्,

हे अल्लाह तपाईले मेरा पापहरूलाई पानी, असिना र बरफले धोइ दिनुहोस् ।

यस पछि 'अऊजो बिल्लाहे मिनश्शैतानिर्रजीम बिस्मिल्लाहहिर्रहमानिर्रहीम' (أعُوْذُ بِاللهِ مِنَ الشَّيْطَان الرَّجِيْم بِسْمِ الله الرحمـن الرَّحِيْـم) भन्नु पर्दछ । यस पछि 'अल्हम्दो (सूर: फातिहा) पढेर :

﴿الْحَمْدُ لِلَّهِ رَبِّ الْعَالَمِينَ ۝ الرَّحْمَنِ الرَّحِيمِ ۝ مَالِكِ يَوْمِ الدِّينِ ۝ إِيَّاكَ نَعْبُدُ وَإِيَّاكَ نَسْتَعِينُ ۝ اهْدِنَا الصِّرَاطَ الْمُسْتَقِيمَ ۝ صِرَاطَ الَّذِينَ أَنْعَمْتَ عَلَيْهِمْ غَيْرِ الْمَغْضُوبِ عَلَيْهِمْ وَلاَ الضَّالِّينَ﴾

अन्य कुनै 'सूरत' वा कन्ठ गरी राखेको कुरआनका, केही आयातहरू पढेर 'अल्लाहो अकबर' (اللهُ أكبرُ) भन्दै रूकूमा निहूरनु र कम्तीमा तीन चोटि 'सुब्हान रब्बियल अजीम' (سُبْحَانَ رَبِّيَ الْعَظِيْم) भन्नु पर्दछ। यस पछि टाउको उठाउँदै 'समेअल्लाहो लेमन हमेद' (سَمِعَ اللهُ لِمَنْ حَمِدَه) अर्थ: अल्लाह उसले गरेको प्रशंसा सुन्यो जसले उसको प्रशंसा गर्यो । भन्दै दुबै हात कांध वा कान सम्म उठाएर हात नबाधी तलै राखेर यो भन्नु पर्दछ ।

((رَبَّنَا لَكَ الْحَمْدُ حَمْداً كَثِيْراً طَيِّباً مُبَارَكاً فِيْهِ))

'रब्बना लकलहम्दो हम्दन् कसीरन् तययेबन् मोबारकन् फीह'

अर्थ:- हे मेरो अल्लाह प्रशंसा तिम्रो लागि हो तिमी पवित्रतम र 'बरकत वाला' हौ ।

फेरि 'अल्लाहो अकबर' (الله أكبر) भन्दै सिज्दामा जानुपर्दछ र दुबै हतकेला अनुहारनिर हुनेगरी निधार र नाकले भुईमा टेक्नुपर्दछ । यसरी गर्दा कुहिनाहरू छातीसित अलग्ग र दुबै घुँडा तथा दुबै खुट्टाका औंलाहरू भुईमा रहनु पर्दछ खुट्टाका औंलाहरू किब्ला तर्फ मुडेको हुनु पर्दछ र कम्तिमा तीन चोटी 'सुब्हान रब्बियल आला' (سُبْحَانَ رَبِّيَ الأَعْلَى) (अर्थ:- पवित्र छ मेरो पालनकर्ता जो सर्वोच्च छ) भनेर तकबीर अर्थात 'अल्लाहो अकबर' (الله أكبر) भन्दै देब्रे खुट्टा पल्टाएर त्यस माथि यसरी बस्नु पर्दछ कि दायाँ खुट्टाको पंजा उभिएको हुनु पर्दछ र त्यसका औंलाहरू किब्ला तिर रहुन् । दुबै हात तिघ्राहरू माथिघुँडानिर राखेर:

((اللَّهُمَّ اغفِرْلِيْ، وَارْحَمْنِيْ وَعَافِنِيْ وَاهْدِنِيْ وَارْزُقْنِيْ))

'अल्लाहुम्मग्फिरली वरहम्नी व आफेनी वहदेनी वरजुकनी'

अर्थ:- हे मेरो अल्लाह मलाई क्षमा गर, मलाई इज्जत प्रदान गर, सोझो बाटो देखाउ र रोजी देउ।

पढेर दोस्रो चोटी सिज्दा गरेर अलिबेर सोझो भई बसेर उभीसक्नु पर्दछ। यो एक रकात पूरा भयो। यस्तै दोस्रो रकात पनि पूरा गरी बसेर यो दोआ (अत्तहियात) पढ्नु पर्दछ।

((التَّحِيَّاتُ لله وَالصَّلَوَاتُ والطَّيِّبَاتُ السَّلاَمُ عَلَيْكَ أَيُّهَا النَّبِيُّ وَرَحْمَةُ الله وَبَرَكَاتُهُ السَّلاَمُ عَلَيْنَا وَعَلَى عِبَادَ الله الصَّالِحِيْنَ أَشْهَدُ أن لاَ إِلَـهَ إلاَّ الله وَأَشْهَدُ أَنَّ مُحَمَّداً عَبْدُهُ وَرَسُولُهُ))

"अत्तहियातो लिल्लाहे वस्सलवातो वत्तइयेबातो अस्सलामो अलैक अययोहन्नबीयो वरहमतुल्लाहे वबरकातोहु अस्सलामो अलैना वअला एबादिल्ला-हिस्सालेहीन्, अश्हदो अल्लाइलाहा इल्लल्लाहु व अश्हदो अन्न मोहम्मदन अब्दोहू व रसूलोहु"

अत्तहियात पढ्दा प्रारम्भदेखिनै दायाँ हातको चोर औंला अलि उठाएर संकेत गर्नु पर्दछ।

**अत्तहियातको अर्थ:**

मन वचन र धनका सम्पूर्ण पूजा-हरू अल्लाहका लागि हुन् । हे नबी तिमी माथि सलाम र अल्लाहको कृपा र निगाह रहोस् । सलाम होस् हामी माथि र अल्लाहका असल सेवकहरू माथि । म गवाही दिन्छु कि अल्लाह बाहेक कोही सत्य पूज्यनीय छैन र गवाही दिन्छु कि मोहम्मद अल्लाहका सेवक र रसूल हुन् ।

यदि दुई रकात नमाज मात्र पढ्ने हो भने अत्तहियात पढेर दरूद शरीफ पढ्नु पर्दछ अनि यो दोआ पढ्नु पर्दछ ।

«اللّٰهُمَّ إِنِّيْ ظَلَمْتُ نَفْسِيْ ظُلْماً كَثِيْراً، وَلاَ يَغْفِرُ الذُّنُوْبَ إِلاَّ أَنْتَ، فَاغْفِرْلِيْ مَغْفِرَةً مِنْ عِنْدِكَ وَارْحَمْنِيْ إِنَّكَ أَنْتَ الْغَفُوْرُ الرَّحِيْمُ»

"अल्लाहुम्मा इन्नीजलम्तो नफसी जुलमन कसीरौं वला यगफेरुज्जोनूबा इल्ला अन्ता फगफिरली मगफेरतम् मिन इन्देक वरहम्नी इन्नका अन्तलग-फुरुर्रहीम ।"

**अर्थ** : "हे अल्लाह मेरा इन्द्रियहरूले धेरै पाप गरेका छन् र पापहरूलाई तिमी बाहेक अरू कसै ले क्षमा गर्न सक्दैन, तसर्थ तिमीले मलाई माफ गर, र म माथि दयागर निःसन्देह तिमी सबभन्दा महान्, क्षमा गर्ने र दया गर्ने हौ ।"

यो दोआ पढेर सलाम फेर्नु पर्दछ ।

दुई रकात भन्दा बढीकोनमाज हो भने अत्तहियात पढेपछि हात कांध वा कानसम्म उठाउँदै उभिएर बाँकी रकात हरू पूरा गरी दोस्रो बैठकमा अत्तहियात पछि दरूद शरीफ र उपरोक्त दोआ पढेर पहिले दायाँतिर फेरि देब्रेतिर 'अस्सलामो अलैकुम व रहमतुल्लाह' ((السلام عليكم ورحمة الله)) भनेर सलाम फेर्नु पर्दछ ।

**दरूद शरीफ यो हो** :

((اللّٰهُمَّ صَلِّ عَلَى مُحَمَّدٍ وَعَلَى آلِ مُحَمَّدٍ كَمَا صَلَّيْتَ عَلَى إِبْرَاهِيْمَ وَعَلَى آلِ إِبْرَاهِيْمَ إِنَّكَ حَمِيْدٌ مُّجِيْدٌ، اللّٰهُمَّ بَارِكْ عَلَى مُحَمَّدٍ وَعَلَى آلِ مُحَمَّدٍ كَمَا بَارَكْتَ عَلَى إِبْرَاهِيْمَ وَعَلَى آلِ إِبْرَاهِيْمَ إِنَّكَ حَمِيْدٌ مَّجِيْدٌ))

"अल्लाहुम्म सल्ले अला मोहम्मदिंव व अला आले

मोहम्मदिन् कमासल्लैत अला इब्राहीम वअला आले इब्राहीम इन्नक हमीदुम्मजीद । अल्लाहुम बारिक अला मोहम्मदिंव व अला आले मोहम्मदिन् कमा बारक्ता अला इब्राहीम व अला आले इब्राहीम इन्नक हमीदुम्मजीद ।"

**अर्थ** : "हे मेरो पालनकर्ता तिमी मोहम्मद र उनका अनुयायीहरू माथि दया र निगाह गर यसरी कि जुन रूपले तिमीले इब्राहीम र उनका अनुयायीहरू माथि गर्यो । नि:सन्देह तिमी प्रशंसा गर्नलायक महान हौ ।"

जनाजाको नमाज बाहेक फर्ज व सुन्नत सबै नमाजको यही प्रकृया हो ।

## नमाजका अधारभूत कुराहरू

नमाजमा छे आधारभूत कुराहरू फर्ज (अनिवार्य) हुन् । यी मध्ये कुनै एउटा छुटे पनि नमाज पुरा हुँदैन, यिनैलाई नमाजका आधारभूत कुराहरू अथवा 'अरकाने नमाज' भनिन्छ । ती यी हुन् :

१. तकबीर तहरीमा अर्थात 'अल्लाहो अकबर' भनेर हात बाँध्नु । यसलाई तहरीमा यसकारण भनिन्छ

किन कि यस पछि नमाज बिरूद्ध गरिने सबै कुराहरू हराम (बर्जित) हुन्छन ।

२. कयाम अर्थात खडा हुनु ।

३. केरात अर्थात सूरह 'अल्हम्दो (सूर: फातिहा) पढ्नु । रातीको नमाज मगरिब, एशा र फजरको पहिलो दुई रकातहरूमा ठूलो आवाजका साथ पढ्नु पर्दछ । सामूहिक नमाजमा इमाम[1] ले ठूलो स्वरका साथ पढ्नु अनिवार्य छ र दिउँसोको नमाजमा जोहर र अस्रमा बिस्तारै पढ्नु पर्दछ तर जुमा र ईदहरूको नमाजमा भने इमामले ठूलो स्वरले केरात[2] गर्नु अनिवार्य छ । बिस्तारै पढिने नमाजहरूलाई 'सिर्री' नमाज र ठूलो स्वरमा पढिने नमाजहरूलाई 'जहरी' नमाज भनिन्छ ।

४. रूकु अर्थात निहुरे र घुँडामा हात राख्नु ।

५. सिज्दा अर्थात भुई माथि टाउको राख्नु । यसमा दुबै हात दुबै घुँडा दुबै खुट्टाका पंजा, निधार र नाक समेत भुईमा टेक्नु पर्दछ ।

---

[1] नमाज पढाउनेलाई इमाम भनिन्छ ।

[2] केरातको अर्थ पाठ गर्नु हुन्छ ।

६. कादा, अर्थात नमाजको अन्तमा अत्तहियात पढ्नु निमित्त बस्नु ।

## नमाज कुन-कुन कुराले समाप्त हुन्छ

नमाजमा एकदम आदर र प्रार्थी भावमा उभिभई राख्नु पर्दछ । यताउता नहेरीकन अल्लाहले हेरी राखेको छ भनि सम्झदै उसतिर ध्यानमग्न हुनु पर्दछ ।

नमाजमा कुरा गरेबाट ठूलो स्वरले हाँसेबाट, तन ढाकेको लुगा फुकालेबाट वा यस्तो कुरा गर्नु जुन सुनेपछि त्यस्तो कुरा गर्ने मानिस नमाजमा रहेनछ भन्ने सुन्नेलाई आभास हुन्छ मा वोजू वा तयम्मुम टुटेपछि त्यस्तो नमाज समाप्त हुन्छ ।

## रोगीको नमाज

यदि कुनै व्यक्ति रोगले गर्दा नमाजमा कयाम गर्न (उभिन) सक्दैन भने उसले बसेर नमाज पढ्न सक्ने स्वीकृति दिइएको छ । यदि रूकु र सिज्दा गर्ने तागत छैन भने संकेतद्वारा गर्नु पर्दछ । बस्न पनि नसक्ने भएपछि किब्ला तर्फ मुख गरी सुतेर संकेतद्वारा नमाज सम्पन्न गर्नु पर्दछ ।

# फर्ज र सुन्नत

पाँच समयको नमाज प्रत्येक मुसलमान पुरूष र नारीको लागि अनिवार्य (फर्ज) छ। विक्षिप्त मानिस र नाबालक बच्चाहरूका लागि होइन । तर सात वर्षको उमेर पुगेपछि केटाकेटीहरूलाई नमाज पढ्ने बानी बसाल्नु पर्दछ, १० वर्ष को उमेर पुगेर पनि नमाज नपढ्नेलाई हप्काउनु वा आवश्यकतानुसार पिट्नु पनि पर्दछ जसबाट वयस्क होउञ्जेलसम्म पढ्ने बानी पूर्णतया बासिसकोस्।

हाम्रो रसूलले (वहाँ माथि शान्ति होस्) अनिवार्य नमाजका साथै केही रकात नमाज अरू पनि पढ्ने गर्नु हुन्थ्यो, यिनलाई 'सुन्नत नमाज' भनिन्छ। यिनीहरूमा केही यस्ता छन् जसलाई अकारण वहाँले कहिले पनि छाड्नु भएन र अरूलाई पनि त्यसो गर्न आदेश दिनु भयो ।यसलाई 'मोवक्कदा' भनिन्छ । शेष सबै सुन्नत नमाज गैर मोवक्कदा हुन् । तिनीहरूमा कोही फर्ज नमाज भन्दा अगाडि र कोही पछि पढिन्छ।

निम्नलिखित विवरणबाट फर्ज र सुन्नत मोवक्कदा नमाजको रकातहरूको संख्या थाहा हुनेछ, साथै कुन फर्जभन्दा अघि र कुन पछि पढिने हो, त्यो पनि थाहा हुनेछ।

| **नमाजको नाम** | **फर्ज** | **सुन्नत फर्जभन्दा अघि** | **सुन्नत फर्जभन्दा पछि** |
|---|---|---|---|
| फजर | दुइ रकात | दुइ रकात | - |
| जोहर | चार रकात | चार रकात | दुइ रकात |
| अस्र | चार रकात | - | - |
| मगरिब | तीन रकात | - | दुइ रकात |
| एशा | चार रकात | - | दुइ रकात |

हाम्रो पवित्र रसूल (वहाँ माथि शान्ति होस्) ले सारा विश्व निद्रामग्न भईरहेको बेला उठेर रातीको एकान्तमा अल्लाहको पूजा गरी रहनुहुन्थ्यो। यसलाई 'तहज्जुदको नमाज' भनिन्छ। यो नमाज अनिवार्य नभए पनि यसबाट धेरै सवाब (पुण्य) प्राप्त हुन्छ। यसमा दुई-दुई रकातमा सलाम फेर्ने गरी आठ रकात पढ्नु हुन्थ्यो। र योही नै "तरावीहको" नमाज पनि हो जसलाई रमजान मा समूह का साथ पढ्ने गरिन्छ। नबी ﷺ ले यस लाई रमजान को तीन रात्रीमा समूहका साथ पढेका थिए। यो 'सुन्नत मोवक्कदा' हो वितिरको नमाज तीन रकात, एशाको नमाज पछि पढिन्छ तर तहज्जुदको नमाज पढ्नेले

त्यसपछि वितिरको नमाज पढ्नु पर्दछ किनभने रसूल (वहाँ माथि शान्ति होस्) यसरी नै पढ्नु हुन्थ्यो। तरावीह पढ्ने हरूले तरावीह पछि वितिर पढ्नु पर्दछ। यी नमाजहरूको अतिरिक्त दुई-दुई रकात ईदको नमाज-हरू 'सुन्नत मोवक्कदा' हुन्।

## नमाजे कसर

कमी गर्नुलाई कसर भनिन्छ। यात्रामा भएको बेला यात्रु मानिसले जोहर, असर र एशाको फर्ज नमाज चार-चार रकातको सट्टा दुई-दुई रकात पढने हुन्छ। फजर र मगरिबमा भने कसर हुँदैन।

## सामूहिक नमाज

दुई वा बढी नमाजीहरू एकैसाथ मिलेर नमाज पढछन् भने त्यसलाई सामूहिक नमाज (नमाज जमाअत) भनिन्छ। हाम्रो रसूल (वहाँ माथि शान्ति होस्) ले फर्ज नमाज सँधैं समूहका साथ पढ्नु हुन्थ्यो। एक्लै नमाज पढ्नु भन्दा जमाअतका साथ पढेमा पच्चीस गुना बढी सवाब (पुण्य व लाभ) प्राप्त हुन्छ।

सामूहिक नमाज पढ्न बनाइने घरलाई मस्जिद भनिन्छ

यो अल्लाहको घर हो। यसमा फर्ज नमाज पढ्नु घरमा पढ्नु भन्दा बढी लाभदायक हुन्छ। सुन्नत र नफिल नमाजहरू घरैमा पढ्नु श्रेयस्कर हुन्छ। स्वास्नी-मानिसहरू पनि समूहमा सम्मिलित हुन सक्दछन् तर तिनको पंक्ति लोग्नेमानिसहरूको पंक्ति भन्दा पछाडि हुनुपर्दछ, तिनीहरूले श्रृंङ्गार गरेर वा अत्तर जस्ता सुगन्धित पदार्थ लगाए आउनु हुँदैन। सामूहिक नमाज-मा एक व्यक्ति सामान्य पंक्ति भन्दा अगाडी खडा हुन्छ, उसलाई इमाम भनिन्छ र उसको पछाडि उभ्भिनेहरूलाई मुक्तदी भनिन्छ मुक्तदी हरू कोही अगाडि पछाडि नभएर पंक्तिवद्ध वा सिधा हुनुपर्दछ।

सबैले एक अर्काको गोडाको पंजासित टाँस्सिएर उभिई राख्नुपर्दछ र 'केरात' बाहेक इमामले गरे जस्तै सबथोक मुक्तदीहरूले पनि गर्दै जानु पर्दछ। नमाजमा पढिने दोआहरू बिस्तारै भन्दै जानु पर्दछ। प्रत्येक रेकातमा मुक्तदीहरूले पनि सूरह फातेहा पढ्नु आवश्यक छ। जमाअत खडा भइसके पछि आउनेहरू पनि त्यसैमा सम्मिलित हुँदै जानु पर्दछ र छुटेको नमाजको अंश इमाम-ले सलाम फेरी सकेपछि पूरा गर्नु पर्दछ। जमाअतमा दुई जना मात्र छन् भने इमाम देब्रे तर्फ र मुक्तदी दाहिनेतर्फ

भई एकै साथ खडा हुनुपर्दछ। यदि तेस्रो मानिस आएर शरीक हुन्छ भने उसले पहिलेको मुक्तदीलाई पछाडि तानेर उसैको साथ उभ्भिनु पर्दछ। यदि पछाडि ठाउँ छैन भने इमामको देब्रेतिर गएर उभ्भिनु पर्दछ। इमामले पनि अवस्थानुसार तीन पाइला अगाडि सर्नसक्दछ।

## सिज्दा सहो

नमाजमा कुनै प्रकारको त्यस्तो भुल हुन गएमा जसबाट नमाजको प्रकृया अनियमित हुन जान्छ अथवा बिस्तारै पढ्नु पर्नेमा ठूलो स्वरले वा ठूलो स्वरले पढ्नु पर्नेमा बिस्तारै पढेको वा त्यस्तै गर्नु पर्ने कुनै कुरा नगरेको वा नगर्नु पर्ने कुनै कुरा गरेको भन्ने शंका लागेकोछ वा दोस्रो रकातको 'कादह' छुटेको वा ईदको नमाजमा तकबीर बिर्सेको छ भने यी सबै अवस्थामा 'बिर्सेको सिज्दा' अथवा 'सिज्दा सहो' गर्नु आवश्यक हुन्छ। यसको तरिका यो हो कि अन्तमा अत्तहियात पछि सलाम फेर्नु भन्दा अघि वा पछि दुई सिज्दा गर्नु पर्दछ। फेरि अत्तहियात र दरूद पढ्नु आवश्यक हुँदैन। सिज्दा सहो नगरेमा नमाज त हुन्छ तर अधुरो रहन्छ। इमामका साथ मुक्तदीहरूले पनि सिज्दा सहो गर्नु पर्दछ। यदि नमाजमा साथ इमामले कुनै भुल गर्न लागेको छ भने मुक्तदीले

ठूलो स्वरमा 'सुब्हानल्लाहो' (سُبْحَانَ اللهِ) भनेर इमामलाई सावधान गराई दिनु पर्दछ र महिला मुक्तदीले दायाँ हातको हत्केलाले देब्रे हत्केलाको पछाडि ताली बजाई दिनु पर्दछ।

## जुमा र ईदको नमाज

जुमाको नमाजमा इमामले 'मिम्बर'[1] माथि बस्दा अजान दिनु पर्दछ। यसपछि इमामले उभिएर अल्लाहको वर्णन हुने गरी धार्मिक उपदेश र जानकारी भएको दुईवटा खुत्बा पढ्नु पर्दछ। सबैले बुझ्ने भाषामा एउटा खुत्बा पढी इस्लामसंग सम्बन्धित कुराहरू बताउनुका साथै एउटा खुत्बा अरबी भाषामा पढ्नु पर्दछ। दुबै खुत्बाको बीच एक छिनको लागि बस्नु पर्दछ।

जुमाको नमाज नभेट्टाउनेले जोहरको नमाज पढ्नु पर्दछ। ईद र बकरईद खुशीका दिन हुन। यसमा हैसियतले भ्याएको राम्रा लुगा लगाई, अत्तर घसी ठूलो स्वरले तकबीर भन्दै 'ईदगाह'[2] जानु सुन्नत हो। ईद, बकरईदका नमाजहरूमा पहिलो रकातमा तकबीर पछि सात चोटि

---

[1] मस्जिद वा अन्य ठाउँमा इमामले मुक्तदीहरूलाई सम्बोधन (खुत्बादिन) गर्न बनाइएको अलि अग्लो ठाउँलाई मिम्बर भनिन्छ।

[2] ईद र बकरईद पढ्ने निश्चित गरिएको वा बनाइएको ठाउँलाई ईदगाह भनिन्छ।

अतिरिक्त तकबीर र दोस्रो रकातमा 'केरात' (कुरआनको पाठ) भन्दा अगाडि पाँच चोटि अतिरिक्त तकबीरहरू भन्नु पर्दछ । इमामकासाथ मुक्तदीले पनि त्यस्तै गर्नु पर्दछ । ईदगाहमा सबै नारी–पुरूष बच्चाहरू यहाँ सम्म कि पवित्र नभएका नारीहरू पनि जान सक्छन् तर अपवित्र नारीहरूले नमाज पढ्नु हुँदैन, प्रार्थनामा मात्र सम्मिलित हुन सक्दछन् । ईद, बकरईदको नमाजमा खुत्बा नमाज पछि मात्र हुन्छ र ती नमाजहरूका लागि अजान र इकामत भन्नु पर्दैन ।

## जनाजाको नमाज

यो यस्तो नमाज हो जसमा रूकू र सिज्दा हुँदैन । मृतकको मुक्तिका लागि प्रार्थना गरिन्छ । यसको प्रकृया यो हो कि जनाजा इमामको अगाडि राखिन्छ । मृतक पुरूष हो भने इमाम उसको छाती र यदि नारी हो भने उसको कम्मरको सामुन्ने उभिनु पर्दछ । मुक्तदी यदि धेरै छन् भने तीन, पाँच वा सात पंक्तिमा र थोरै छन् भने एउटै पंक्तिमा उभिनु पर्दछ । इमामले पहिलो तकबीर भन्दा सबैले नमाज जस्तै हात बाँधेर 'सना' अनि 'अल्हम्दो (सूर: फातिहा)' पढ्नु पर्दछ । दोस्रो तकबीरमा दरूद शरीफ र तेस्रो तकबीरमा यो दोआ पढ्नु पर्दछ ।

«اَللّٰهُمَّ اغْفِرْ لِحَيِّنا، وَمَيِّتِنَا، وَشَاهِدِنَا، وَغَائِبِنا، وَصَغِيْرِنَا وَكَبِيْرِنَا، وَذَكَرِنَا وَأُنْثَانَا. اَللّٰهُمَّ مَنْ أَحْيَيْتَهُ مِنَّا فَأَحْيِهِ عَلَى الإِسْلَامِ وَمَنْ تَوَفَّيْتَهُ مِنَّا فَتَوَفَّهُ عَلَى الإِيْمَانِ. اَللّٰهُمَّ لَا تَحْرِمْنَا أَجْرَهُ وَلَا تَفْتِنَّا بَعْدَهُ»

“अल्लाहुम्मगिफरले हय्येना व मय्येतेना व शाहेदेना व गाएबेना व सगीरेना व कबीरेना व जकरेना व उन्साना अल्लाहुम्म मन् अहययतहु मिन्ना फअहयेही अलल इस्लाम वमन तवफ्फैतहु मिन्ना फतवफ्फहु अललईमान अल्लाहुम्मा ला तहरिम्ना अजरहु वला तफ्तिन्ना बादहु।” (मुस्लिम)[1]

**अर्थ:** “हे मेरो अल्लाह ! हाम्रा जीवित र मृतक-लाई, रुजु र बेरूजुलाई, साना र ठूलालाई र पुरूष तथा नारीलाई मुक्ति प्रदान गर, हे मेरो अल्लाह ! हामी मध्ये जसलाई तिमीले जीवित राख्दछौ, उस-लाई इस्लामका साथ जीवित राख्नु र जसलाई मृत्यु दिन्छौ, उसलाई इस्लामका साथ मृत्यु देउ,हे अल्ललाह ! यसको फाइदाबाट हामीलाई अलग

[1] हदीसको एउटा प्रसिद्ध पुस्तकको नाम 'मुस्लिम' हो।

नराखियोस् र यसपछि हामीलाई खराबकाममा नलगाइयोस् ।”

फेरि चौथो चोटी तकबीर भनेर सलाम फेर्नु पर्दछ ।

उक्त दोआ (प्रार्थना) बालिग मृतकको लागि हो । नाबालिग केटाकेटीका लागि यो दोआ पनि पढ्नु पर्दछ ।

«اَللّٰهُمَّ اجْعَلْهُ لَنَا فَرَطاً وَّاجْعَلْهُ لَنَا أَجْرًا وَّذُخْرًا وَّاجْعَلْهُ لَنَا شَافِعًا وَّمُشَفَّعًا»

“अल्लाहुम्मजअलहु लना फरतन् वजअलहु लना अजरौं व जुखरन् वजअल्हु लना शाफेअन् व मोशफ्फअन ।”

**अर्थ** : “हे अल्लाह यो बच्चालाई हाम्रो मुक्तिका लागि अघि सर्ने बनाउ र यसलाई हाम्रो लागि पुण्य र स्रोत बनाउ र यसलाई हाम्रो लागि सिफारिश गर्ने र हामीबाट सिफारिश गरिएको बनाउ ।”

# तेश्रो आधार – जकात

कुनै व्यक्तिसंग सुन, चाँदी, अन्न वा जनावर नेसाब[1] सम्म पुगिसकेकोछ भने त्यस्तो व्यक्ति माथि त्यसको एउटा निश्चित परिमाण प्राप्त गर्न समुदायको अधिकार हुन जान्छ । त्यस परिमाणमा त्यस्ता वस्तुहरू दिनुपर्ने भनी नमाज जस्तै अल्लाहले अनिवार्य बनाई दिएको छ । नेसाबको मालिक भएर पनि जकात नदिने व्यक्तिलाई प्रलय अथवा कयामतमा काफिरहरू सरह मानिने छ ।

जकातको अर्थ पवित्र गर्नु वा असल पार्नु हो । यो दायित्व पुरा गरी सकेपछि मुसलमानको सम्पूर्ण सम्पत्ति पवित्र हुने हुनाले यसको नाम जकात अर्थात् 'पवित्र गर्ने' राखिएको छ । विक्षिप्त र नाबालकहरूको सम्पत्तिबाट पनि जकात अनिवार्य हुन्छ जसलाई त्यस्ता नाबालकका हकवालाहरूले निकाल्नु पर्दछ ।

जकातमा अल्लाह तआलाले धेरै फाइदाहरू निहित गरेको छन :

१. जकात कयामत (प्रलय) को दिन प्रकाशपुञ्ज हुनेछ ।

---

[1] नेसाव भनेको त्यस्तो परिमाणात्मक हद हो जुन पुग्नासाथ जकात निकाल्नु र दिनु अनिवार्य हुन्छ ।

२. जकात निकालिएको सम्पत्ति अल्लाहको संरक्षणमा रहन्छ ।

३. जकात निकालेबाट सम्पत्तिमा बृद्धि हुन्छ ।

४. जकातबाट गरीब मुस्लिम बन्धुहरूको काम चल्दछ र तिनीहरूले जकात दिनेहरूका लागि प्रार्थना गर्दछन् जसलाई अल्लाह स्वीकार गर्दछ ।

## नेसाब

जकात एकवर्षसम्म संचित रहीसकेको त्यस्तो मालमा अनिवार्य हुन्छ, जुन स्वत: बृद्धियोग्य हुन्छ । घर र घरका भांडाकुँडामा जकात लाग्दैन ।

जकातको लागि चाँदीको नेसाबमा हद साढे बाउन्न तोला र सुनको साढे सात तोला वा यसको मोल जतिको नगद रूपैयां, एकवर्षसम्म संचित रहिरहयो भने त्यसको मालिकले चालिस रूपैयांमा एक रूपैयांको दरले जकात निकाल्नु पर्दछ ।

जनावरहरूमा प्रत्येकको हद अलग अलग हुन्छ । बाखा-बाखीहरूको लागि चालिसमा एक, गाई, गोरू, भैंसीको लागि तीसमा एउटा (एक साल को बाछा या बाछी) र

ऊंटको लागि (२४ सम्म प्रत्येक) पांचमा एउटा (बाखा) जकात निकाल्नु पर्दछ।

अन्नको उब्जानुमा माटोको क्षमताको हिसाबले जकात निकाल्नु पर्दछ। अन्नको यदि स्वयम् सिञ्चित भूमिबाट उब्जेको छ भने त्यसबाट दश भागमा एक भाग जकात दिनु पर्दछ। यदि किसानले नहर वा अन्य किसिमले पानी पुऱ्याई सिंचाई गर्नु पर्ने माटो रहेछ भने त्यसको उब्जानुबाट बीस भागको एक भाग जकात दिनु पर्दछ।

## जकातको उपयोग

जकातको माल वा रकम देहायका आठ कार्यहरूमा आवश्यकतानुसार खर्च वा उपयोग गर्न सकिन्छ :

१. आयका श्रोत नहुने गरीबहरूको पालन पोषणमा।

२. आफैं आर्जन गर्न नसक्ने नि:सहायहरूको सहायता गर्नमा।

३. जकात सम्बन्धी काम गर्ने कर्मचारी वा कामदार-हरूको तलबमा।

४. इस्लाम फैलाउने काममा।

५. दासहरूलाई स्वतन्त्र गर्ने काममा।

६. ऋृण तिर्न सक्षम नहुने ऋृणीहरूको कर्जा चुक्ता गर्ने काममा ।

७. अल्लाहको मार्गमा मुसलमानहरूको शक्ति बढाउन र शत्रुहरूसित संघर्ष गर्ने काममा, र

८. मुसलमान यात्रुहरूको खाना र यात्रा खर्चमा ।

जकातको रकम समूह वा समुदायको मुखिया कहाँ वा यस्तो विश्वासिलो संस्थामा जम्मा गर्नु श्रेयस्कर हुन्छ जसले त्यो रकम ईमान्दारीका साथ उपयुक्त काममा खर्च गरोस् ।

प्रत्येक बस्ती[1] को रकम सोही ठाउँमा खर्च गरिनु पर्दछ र तर कुनै विशेष आवश्यकता र परिस्थितिमा अन्य स्थानमा पनि सार्न र खर्च गर्न सकिन्छ ।

---

[1] बस्ती भनेको कुनै पनि गाउँ, शहर वा टोललाई जनाउँछ ।

# चौथो आधार–रोजा

बिहानदेखि सूर्यास्तसम्म (अल्लाह का पूजा को निम्ति) खानपीन नगर्नुलाई रोजा भनिन्छ। हिजरी सन् २ मा रमजान[1] महीना भरिको रोजा राख्नु सर्वप्रथम मुसलमान-हरूका लागि अनिवार्य गरिएको थियो। प्रत्येक बालिग र होश भएको र रोजा राख्न सक्षम व्यक्तिले रमजानको महीना भरी रोजा राख्नुपर्दछ। जानीजानी एउटा रोजा पनि छाड्नहुन्न।

## रोजाका फाइदाहरू

१. रोजा राख्नेहरू सित अल्लाह खुशी हुन्छ र कयामत (प्रलय) मा त्यस्तालाई स्वर्ग प्रदान गर्नेछ।

२. रोजा राख्नाले हृदयमा प्रकाश र अल्लाहबाट भय उत्पन्न हुन्छ, जुन एउटा ठूलो उपलब्धि हो।

३. रोजा राख्नाले भोक र तिर्खा सहने बानी बस्दछ र मानिसले मन माथि नियन्त्रण राख्न सक्दछ।

४. रोजामा मानिसले हलाल (स्वीकार्य अथवा जायज) कुराहरूको प्रयोगमा नियन्त्रण गर्न हुनाले हराम

[1] अरबी सालको रमजान नवौं महीना हुन्छ।

(वर्जित अथवा नाजायज) कुराहरूको अप्रयोग सरल हुन जान्छ ।

५. रोजाबाट रोग हट्दछ र स्वास्थ्य राम्रो हुन्छ ।

६. रोजाबाट सामर्थ्यवान र धनी मानिसले प्रायः असमर्थ र गरीबहरूले बेहोर्ने भोक र तिर्खाको अनुभव गर्ने हुनाले तिनको सहायता गर्न अग्रसर हुन्छन् ।

रोजा राख्नेले बिहान हुनु भन्दा अघि 'सेहरी' खानु र सूर्यास्त हुने बित्तिकै रोजाको ब्रत तोड्नु अर्थात् 'इफतारी' गर्नु सुन्नत हो ।

## रोजा कुन-कुन कुराले टुट्दछ

जाना जानी केही खानु, पिउनु वा बान्ता गरेबाट रोजा टुट्दछ तर बिर्सेर त्यसो गरेमा रोजा टुट्दैन ।

रोजामा दतिवन गर्नु, तेल र अत्तर लगाउनु वा सुरमा (गाजल) लगाउनु वा गर्मीको कारणले टाउको, छाती वा खुट्टामा पानी हाल्नु, नुहाउनु र आवश्यकतानुसार घाँटी-भित्र प्रवेश नगर्ने गरी खानाको नूनको स्वाद चाख्नुमा बन्देज छैन ।

## सट्टा रोजा

रमजानको महीनामा बिरामी परेका वा यात्रामा रहेकाहरूलाई रोजा नरहने अधिकार छ । तर निको भईसके पछि वा यात्रा समाप्त भएपछि अर्को रमजान शुरू हुनुभन्दा अघि छुटेको जति रोजा राख्नु पर्दछ ।

महिलाहरू पवित्र नभएसम्म रोजा राख्नु हुँदैन । अपवित्रताको अवस्थामा छुटेका रोजाहरू पवित्र भएपछि अर्को रमजान शुरू नहुँदासम्म सोही अवधि भित्रै राखी पूरा गरी सक्नु पर्दछ ।

कमजोर, बृद्ध वा सँधै बिरामी भईरहने मानिसले रोजा राख्न नसके त्यस्ताको लागि सट्टा रोजा राख्नु अनिवार्य छैन । छुटेको प्रत्येक रोजाको सट्टा सामर्थ्य भए एउटा गरीबलाई भोजन गराई दिनु पर्दछ ।

## नफिल रोजा

हाम्रा पवित्र रसूल रमजानका रोजाहरूको अतिरिक्त अरु धेरै रोजाहरू राख्नु हुन्थ्यो जुन अनिवार्य थिएनन् तर राखेबाट अत्याधिक पुण्य प्राप्त हुन्छ । यी मध्ये शव्वाल[1]

---

[1] अरबी सालको यो दशौं महीना हो जुन रमजान पछि प्रारम्भ हुन्छ ।

महीनाका (६) रोजाहरू र अरफा अर्थात् जिलहिज्जा [1] महीनाका नवौं तारीखको रोजा, महत्वपूर्ण छन् । साथै आशुरा अर्थात् मोहर्रम [2] महीनाको रोजा जुन दिन फिरऔन र उसको फौज समाप्त भएको थियो र हजरत मूसा आफ्ना अनुयायीहरूका साथै मुक्ति पाउनु भएको थियो । ईदुल्फित्र (ईद) को दिन र बकरईदको दिन अर्थात् जिलहिज्जाको १० देखि १३ तरिखसम्म रोजा राख्न मनाही गरिएको छ । हजमा सम्मिलित भएकाहरूले अरफाको रोजा राख्नु हुँदैन ।

## एतकाफ

रमजानको महीनामा गरिने पूजाहरूबाट बढी पुण्य प्राप्त हुन्छ । त्यसकारण यस महीनामा सके जति पूजाहरू र कुरआनको पाठ गर्नु पर्दछ । यस महीनाको अन्तिम १० रातीमध्ये कुनै विजोडा राती 'शबे कदर' हुन्छ जुन हजार महीना भन्दा पनि श्रेष्ठ हुन्छ, यसमा गरिएका पूजाहरूबाट मानिसलाई मुक्ति प्राप्त हुन्छ । हाम्रो रसूल (ﷺ) यस रातीको लागि रमजानको अन्तिम दस दिन मस्जिदमा नै बस्नु हुन्थ्यो र पूजामा नै लागिरहनु हुन्थ्यो ।

---

[1] अरबी सालको बाह्रौं महीना हो ।

[2] अरबी सालको पहिलो महीना हो ।

यसैलाई एतकाफ भनिन्छ । एतकाफमा बस्ने व्यक्तिले प्राकृतिक आवश्यकता बिना मस्जिदबाट बाहिर निस्कनु हुँदैन ।

## सदकतुल्फितर

घरको मुख्यले घरका सबै साना, ठूला पुरूष र नारीहरूको तर्फबाट 'सदका फित्र' दिनु पर्दछ । यसको परिमाण जिन्सी मालमा (खाद्यान्नमा) साढे दुई किलोग्राम हुन्छ । त्यत्ति जिन्सी अथवा त्यसको मूल्य जति नगदमा निकालेर ईदको नमाजको लागि जानु भन्दा अघि नै गरीबहरूमा वितरण गरिसक्नु पर्दछ ।[1] यस सदका (दान) बाट रोजामा केही साना-तिना त्रुटीहरू हुन गएको भए तिनीहरू माफ हुनेछन् ।

---

[1] सदकतुल्फितर मा अनाज निकालनु नै उत्तम हो, किन भने कि नवी ﷺ र वहाँ का साथी सहावाहरू द्वारा नगद निकालनु प्रमाणित छैन। तर आफू तर्फ वाट अनाज किनेर सद्का निकालन को लागी अरू कसैलाई पैसा दिएर वकील वनाउन सक्दछ ।

# पाँचौ आधार-हज

पवित्र बैतुल्लाहको[1] परिक्रमा गर्नु, जिलहिज्जाको नवौं तारिखमा अरफातको मैदानमा उपस्थित भई तत्सम्बन्धी कर्तब्यहरू (विधि-विधान) पूरा गर्नुलाई हज भनिन्छ ।

हज सन् आठ हिजरीदेखि त्यस्तो प्रत्येक मुसलमानको जीवनमा एक चोटि अनिवार्य गरियो जो यात्रा गर्न सक्षम हुनुका साथै उ सग हज गर्न जाँदा र आउँदासम्म उसको परिवारले खानलाउन पुग्ने जति सम्पत्ति हुन्छ । मुनासिब कारण वेगैर हज नगर्नु ठूलो पाप हो यहाँसम्म कि त्यो कुफ्र समान हुन्छ ।

हजमा अल्लाह तआलाले भौतिक र नैसर्गिक दुबै फाइदाहरू निहित गरेको छ :

१. हज गरेबाट मानिस सम्पूर्ण पाप (गुनाह) हरूबाट स्वच्छ र पवित्र हुन्छ ।

[1] बैतुल्लाह भनेको अल्लाहको घर हो, यसलाई काबा पनि भनिन्छ यो मक्कामा छ । यसै तर्फ मुख गरी नमाज पढिन्छ । अल्लाहको पूजा गर्न हजरत इब्राहीमले बनाउनु भएको पहिलो घर (मस्जिद) हो।

२. हज गरी सकेकाहरूलाई अल्लाह तआला निश्चित रूपले स्वर्ग प्रदान गर्दछ ।

३. हज गर्दा काबाको परिक्रमा र त्यहाँ नमाज पढ्ने अवसर उपलब्ध हुन्छ । जुन संसारको पहिलो मस्जिद हो र त्यहाँको एक नमाज अन्य मस्जिदमा एक लाख नमाज जति प्रभावकारी हुन्छ ।

४. हजमा विश्वका सबै देशका मुसलमानहरू एक ठाउँमा जम्मा हुन्छन् । तिनीहरू पारस्पारिक रूपमा एक अर्काबाट प्रत्येक किसिमको भौजिक र धार्मिक, बौद्धिक तथा व्यवहारिक फाइदाहरू प्राप्त गर्न सक्दछन् ।

५. हजको माध्यमबाट सम्पूर्ण विश्वका मुसलमानहरू संगठित हुन सक्दछन् यो यस्तो पवित्र संस्था हो जुन मुसलमान बाहेक अरुलाई प्राप्त छैन ।

६. हज गर्न जाँदा यात्रा र पर्यटनको अतिरिक्त अन्य देशका मानिसहरू सितको भेटघाटबाट विभिन्न अनुभव प्राप्त गर्न सकिन्छ ।

७. हजमा मानिसले चाहेमा ब्यापारिक सामानहरू लगेर धेरै फाइदा आर्जन गर्न सक्दछन् ।

## हज र उमरा

हज सालमा एक चोटि मात्र जिलहिज्जा महीनाको नवौं तारिखका दिन अरफातको मैदानमा सम्पन्न हुन्छ। यो मक्काबाट १२ मील टाढा छ। हज गर्न गएका सबै नर नारी यस दिन उक्त मैदानमा पुगेर प्रार्थना गर्दछन्। कुनै पनि व्यक्ति काबाको परिक्रमा गरेर सफा[1] र मरवा[1] बीच चक्कर लगाउँछ भने त्यसलाई सानो हज अर्थात् उमरा भनिन्छ। यसको लागि कुनै निश्चित मिति र समयको प्रतिबन्ध छैन।

## इहराम

चारैतिरबाट हज गर्न जाने हज यात्रीहरूले इहराम बाँध्नु पर्ने स्थानहरू निश्चित छन् जसलाई मीकात भनिन्छ। उपमहाद्वीपका देशहरू र नेपालका लागि यो ठाउँ यलमलम हो। जो समुद्र को नजिकै छ र पानी जहाजद्वारा जाँदा सामुन्ने पर्दछ। जहाजका कार्यकर्ता-हरूले उक्त स्थान आएपछि हज यात्रीहरूलई जानकारी गराउँछन्। हर यात्रीले त्यस बखत स्नान गरेर दुई रकात नमाज (वजूका सुन्नत) पढी, लगाई राखेको सिएको लुगा

[1] यी दुइटै पहाडीको नाम हो जुन काबा को नजिकै छ।

उतारी इहरामको कपडा लगाउनु पर्दछ। इहराममा लुँगी बांधेर, कांधमा चादर राखेर टाउको खुल्ला राख्नुपर्छ। इहराम लगाएको अवस्थामा अत्तरहरू लगाउनु हुँदैन। जुत्ता लगाउनु हुन्छ तर गोली गाँठो नढाक्ने गरी लगाउने पर्छ। साथै मोजा लगाउनु हुँदैन। यही पहिरन राजा र रंक सबैका लागि हो र अल्लाहको दरबारमा मालिक र दासमा कुनै भेदभाव हुँदैन।

महिलाहरूले सिएको पहिरन लगाउनु हुन्छ तर अनुहारमा पर्दा (नकाब) र हातमा पन्जा लगाउनु हुन्न,[1] साथै अत्तर वा सुगन्धित पदार्थ प्रयोग गर्नु हुँदैन।

इहराम लगाए पछि खेल-कूद, लडाई-झगड़ा, गाली-गोपता गर्नु सख्त मनाही छ।

जो सुकैले यसको विपरीत गरेमा उसले त्यसको पश्चा-ताप गर्नु पर्नेछ। समुद्रको शिकार गर्न भने सकिन्छ। इहराम बाँधी सकेपछि सँधै 'तकबीर तलबिया' अर्थात् निम्नलिखित दोआ पढीरहनु पर्दछ :

«لَبَّيْكَ اَللّٰهُمَّ لَبَّيْكَ، لَبَّيْكَ لاَ شَرِيْكَ لَكَ لَبَّيْكَ، إِنَّ الْحَمْدَ، وَالنِّعْمَةَ لَكَ وَالْمُلْكَ، لاَ شَرِيْكَ لَكَ»

---

[1] तर दोपट्टा द्वारा अनुहार र पन्जा लाई ठाकनु पर्दछ।

"लब्बैक अल्लाहुम्मा लब्बैक लब्बैक लाशरीक लक लब्बैक इन्नलहम्दा वन्नेअमता लक वल्मुल्का-लाशरीक लक ।"

**अर्थ** : हे मेरो अल्लाह म उपस्थित छु हे अल्लाह ! म उपस्थित छु म उपस्थित छु तेरो कोही साझेदार छैन म उपस्थित छु । निःसन्देह सबै प्रशंसा तेरो लागि छ । सबै अनुग्रह (नेमत) र शासन सत्ता तेरो हो । तेरो कोही साझेदार छैन ।

## तवाफ र सई

हज यात्रीहरू मक्का भित्र पस्ना साथ सर्वप्रथम वोजू सहित स्नान गरेर बैतुल्लाह गएर त्यहाँ त्यस अवसरमा पढिने प्रार्थनाका सूत्रहरू (तवाफकोदोआ) पढ्दै काबाको सात चोटि परिक्रमा गर्नु पर्दछ । परिक्रमा गरेर मुल्तजम [1] अर्थात् काबाको ढोका लाई पक्रेर प्रार्थना गर्नु पर्दछ, अनि 'मोकामे इब्राहीम' (इब्राहीमको स्थान) मा दुई रकात नमाज पढ्नु पर्दछ । यसपछि काबाको नजिकै रहेका 'सफा' र मरवा' त्यहाँका पहाडीहरू जसलाई जोड्ने

[1] हज्रे अस्वद र काबा को ढोका को बीच को ठाउँ लाई मुल्तजम भनिन्छ ।

सडक छ र त्यसको दुबै तिर बाटो छ, त्यसमा सात चोटि बिस्तारै दगुर्नु पर्दछ ।[1] यस पछि टाउको कपाल काटनु र खौरनुपर्छ । यत्ति गरे पछि उमरा पूरा हुन्छ ।

यसपछि उमराको लागि मात्र नीयत गर्नेले इहरामका पहिरन फुकालिदिनु पर्छ, हजमा जाने बेला फेरि लगाउनु पर्ने तथा उमरा र हज दुबैको नियत गर्नेले हज र कुर्बानी नगरेसम्म इहरामको पोशाक नफुकाली लगाई राख्नु पर्दछ ।

## हज्रे असवद

हजरत इब्राहीमले एकमात्र अल्लाहको पूजाको लागि काबा निर्माण गर्दा 'हज्रे असवद' भन्ने एउटा कालो ढुङ्गा-लाई काबाको एउटा कुनामा जडान गर्नु भएको थियो । हज गर्ने प्रत्येक व्यक्तिले यस (लाई चुमनु) या हातले छुनु पर्छ र धेरैको समूह भए टाढैबाट यस तर्फ हात उठाउनु पर्ने र त्यसपछि सात चोटि काबाको परिक्रमा गर्नु पर्दछ ।

---

[1] अब यो मस्जिदे हराम भित्र आइ सकेको छ ।

## हजको प्रकृया

जिलहिज्जाको आठ तारिखका दिन हजका लागि प्रस्थान गरिन्छ । मक्कादेखि तीन मील टाढा पर्ने 'मेना' मा हाजीहरू राती बस्दछन् । भोलि पल्ट बिहानै फजरको नमाज पछि[1] त्यहाँबाट हिडेर 'अरफात' को मैदानमा पुगेर त्यहाँ जोहरको समयमा नै जोहर र अस्रका दुई-दुई रकात नमाज पढ्नु पर्दछ । त्यसपछि यसै मैदान (चौर) मा 'जब्ले अरफात' वा जब्ले रहमत' [2] मध्ये जुन एकमा भए पनि उभिएर स्वच्छ हृदयले आफ्ना मालिक (अल्लाह) सित साँझसम्म (सूर्यास्त भए सम्म) दोआ (वरदानहरू) मागी राख्नु पर्दछ ।

सूर्यास्त पछि 'तल्विया' पढ्दै त्यहाँबाट प्रस्थान गरी 'मुज्दलेफा' भन्ने स्थानमा पुगेर एशाको समयमा मगरिबको तीन रकात र एशाको दुई रकात पढेर राती बिताउनु पर्दछ । बिहान पख फजरको नमाज पढेर अल्लाहको चर्चा गर्नुमा र प्रार्थना गर्नुमा ब्यस्त रही सूर्योदय भन्दा पहिला मेनातिर प्रस्थान गर्नु पर्दछ ।

---

1 सुर्योदय पश्चात

2 'जब्ले अरफात' र 'जब्ले रहमत' दुई साना साना पहाडीहरूका नाम हुन् ।

## रमी

मेनामा तीन स्थानमा निशानहरू (चिन्हो) बनाइएका छन्। जसलाई 'जम्रात' भनिन्छ, ती मध्ये प्रत्येकलाई स–साना सात–सातवटा ढुङ्गाले हान्नु पर्दछ। यसले शैतान सितको घृणा प्रकट गर्दछ जसबाट मानिस शैतान भन्दा टाढा रहिरहोस्।

## कुर्बानी

मेनामा रमी पछि कुर्बानी गर्नु पर्छ। यही नै त्यो ठाउँ छ जहाँ हजरत इब्राहीमले स्वप्नमा अल्लाहको संकेत पाएर आफ्नो छोरो हजरत इस्माईललाई कुर्बान (बलिदान) गर्न तयार हुनु भएको थियो। तर जबह गर्ने (काट्ने) बेला छोराको घाँटीमा छुरी राखेपछि अल्लाहले आफ्नो कृपाले वहाँलाई रोक्यो र भन्यो कि वहाँ त्यस्तो कडा जांचमा अबिचलित रही सफल हुनु भयो।

यसै इब्राहीमी सुन्नतलाई अल्लाहले कायम राख्दै प्रत्येक मुसलमानलाई हज पछि त्यहाँ कुर्बानी गर्न आदेश दियो।

कुर्बानीको मासु आफु पनि खानु र आफ्ना नातेदार र सम्बन्धीहरू, मित्रहरू, र गरीब–गुरूवाहरूलाई खुवाउनु पर्दछ। कुर्बानीबाट फुर्सद पाएर आफ्नो इहरामको

पहिरन उतारेर लोग्ने मानिस भए कपाल खौरनु पर्ने र त्यसपछि गएर काबाको परिक्रमा गरी मेना[1] फर्कनु पर्दछ। सके तीन दिन अथवा घटीमा दुई दिन मेनामा बस्नु पर्दछ। प्रत्येक दिन जम्रात (अर्थात ढुङ्गाले हिर्काउने कार्य) गर्नु पर्दछ। तेस्रो दिन मक्कामा आएर काबाको अन्तिम परिक्रमा गरी त्यहाँबाट प्रस्थान गरे हुन्छ।

मदीना मोनव्वरा[2] को भ्रमण आफूलाई अनुकूल परेको बेला पारी गर्नु पर्दछ। हजभन्दा अघि वा पछि, यसको लागि मौसमको कुनै प्रतिबन्ध छैन।

---

[1] एउटा ठाउँको नाम हो। जुन मक्का को नजिकै छ।

[2] यो साउदी अरबको दोस्रो पवित्र र महत्वपूर्ण शहरको नाम हो।

# أركان الإسلام

تأليف

فضيلة الشيخ عبدالرؤوف الرحماني

- رحمه الله -

مراجعة وتصحيح

آفتاب عالم محمد أنس

محمد سليم ساجد المدني

طبع ونشر

المكتب التعاوني للدعوة والإرشاد وتوعية الجاليات بسلطانة

هاتف ٤٢٤٠٠٧٧ ناسوخ ٤٢٥١٠٠٥ ص.ب ٩٢٦٧٥ الرياض ١١٦٦٣ شارع السويدي

# أركان الإسلام

تأليف

**فضيلة الشيخ عبدالرؤوف الرحماني**

**- رحمه الله -**

**نيبالي - ٢٦٦**

مراجعة وتصحيح

**آفتاب عالم محمد أنس**

**محمد سليم ساجد المدني**

ردمك: X-٥٩-٨٢٨-٩٩٦٠





المكتب التعاوني للدعوة والإرشاد وتوعية الجاليات بسلطانة
تحت إشراف وزارة الشئون الإسلامية والأوقاف والدعوة والإرشاد
E.mail : Soltanah22@hotmail.com